।।श्रीमते रामानुजाय नमः ।।



# श्रीपराशरभट्टर्को वैभव



लेखक-

श्रीकृष्णमाचार्य

।।श्रीमते रामानुजाय नमः ।।



# श्रीपराशरभट्टर्को वैभव



लेखक एवं प्रकाशक-

**श्रीकृष्णमाचार्य**

गैंडाकोट (नवलपरासी)

प्रथमसंस्करण - वि.सं. २०६७ विजयदशमी

मुद्रित प्रति - ५००

मूल्य रू. - २०



ग्रन्थप्राप्तिस्थान - श्रीकृष्णमाचार्य
माण्डव्यनिवास, मन्दिरमार्ग
गैंडाकोट १, नवलपरासी

कम्प्युटर सेटिङ्ग - **निप्पन कम्प्युटर्स एण्ड डिजाइनर्स**
मेघामार्केट, शहिदचोक
फोन: ९८४५०५२०९२

मुद्रक - **गणेश छापाखाना**
मेनरोड, नारायणगढ
फोन: ०५६-५२०५४८

।। श्रीमते रामानुजाय नमः ।।

# किञ्चिन्निवेदन

हतावद्या हृद्या गुणगणसमृद्धा सुमधुरा
गभीरा सौहार्दं मनसि विदधाना विजयते ।
यदीया श्रीसूक्तिस्स खलु सुमहान्भद्रचरितो
गुरुर्गोपालार्यो विलसतु मदीये हृदि सदा ॥

"आचार्यवंशो ज्ञेयः" भन्ने शास्त्रको आदेश छ । अनादिकालबाट यस संसारमा घुमिराखेको जीवात्मामाथि भगवान्‌को आकस्मिक कृपादृष्टि पर्दा उसले एक सदाचार्यको सान्निध्य प्राप्त गर्दछ । हामी सबैका परमप्राप्य, श्रीमन्नारायणप्रभुसँगको सुदृढ सम्बन्धलाई सदाचार्यहरूले नै परिचय गराइदिनुहुन्छ । श्रीवैष्णवसम्प्रदायस्थ पूर्वाचार्यहरूको हारमालामा श्रीमन्नाथमुनिस्वामीजीदेखि लिएर श्रीमद्वरवरमुनि (मणवालमहामुनि) सम्मका एक एक महापुरुषहरूको जीवनवृत्तान्त र महोन्नत उहाँहरूको ज्ञानानुष्ठान आदि हामी श्रेयोभिलाषीहरूका लागि त्रिसन्ध्यस्मरणीय छ । "वक्तव्यम् आचार्यवैभवं भगवद्वैभवञ्च" भने अनुसार सन्मार्गदर्शी यी महापुरुषहरूको

परम पावन प्रभावलाई हृदयङ्गम गर्ने प्रयत्न गरौं । विगतसमयमा श्रीभगवद्रामानुजस्वामीजीका प्रधानशिष्य श्रीकूरत्ताल्वान्को वैभव संक्षेपमा प्रकाश गरिएको थियो । यसपल्ट उहाँका सुपुत्र महामेधावी श्रीपराशरभट्टर्स्वामीजीको वैभवविशेषलाई संक्षिप्तरूपमा नै अनुभव गरौं भन्ने प्रार्थना गर्दै परमादरणीय भागवतोत्तमहरूको सन्निधिमा यो लघु कृति समर्पण गर्दछु ॥

निवेदक-

**श्रीकृष्णमाचार्य**

गैंडाकोट (नवलपरासी)



।। श्रीमते रामानुजाय नमः ।।

श्रीपराशरभट्टार्यः श्रीरङ्गेशपुरोहितः ।
श्रीवत्साङ्कसुतः श्रीमान् श्रेयसे मेऽस्तु भूयसे ॥

# ◘ श्रीपराशरभट्टरको वैभव ◘

श्रीभगवद्रामानुजस्वामीजीका प्रसिद्ध शिष्यका रूपमा ख्याति प्राप्त गर्नुभएका महाविद्वान् एवं वैराग्यका निधि श्रीवत्सचिह्नमिश्र-कूरेशस्वामीजीकै समान अरू केही जना महानुभावहरूले पनि उभयवेदान्तप्रवर्तकाचार्यका रूपमा प्रसिद्धि प्राप्त गर्नुभएको थियो । उहाँहरूमा- कुरुकेश्वर, श्रीराममिश्र, अनन्ताचार्य, श्रीविष्णुचित्तार्य आदि नामले प्रसिद्ध केहीजना महापुरुषहरूले श्रीभाष्यको व्याख्या आदि रचना गरेर, केही जनाले श्रीविष्णुपुराण एवं द्रविडप्रबन्धहरूको सङ्ग्रहव्याख्यानको रचना गरेर श्रीरामानुजस्वामीजीको आज्ञानुसार आ-आफ्ना प्रान्तहरूमा श्रीविशिष्टाद्वैतसिद्धान्तको प्रचार गर्नुभएको थियो । श्रीरामानुजस्वामीजीको अन्तिम आदेश अनुसार उहाँको समय पश्चात् श्रीवैष्णवाचार्यपीठमा अधिष्ठित प्रधान आचार्य श्रीपराशरभट्टर् नै हुनुहुन्थ्यो । आफूहरू भन्दा उमेरमा अत्यन्तै कनिष्ठ भएता पनि

श्रीपराशरभट्टर् स्वामीजीलाई, पहिला बताइएका अनन्ताचार्य, श्रीराममिश्र, एवं श्रीविष्णुचित्तार्य आदि महापुरुषहरूले श्रीरामानुजस्वामीजीको आज्ञालाई शिरसा वहन गरेर श्रीवैष्णवाचार्यपीठको आचार्यको रूपमा परिगणना गरेर परिपूर्णरूपले गौरव गर्नुहुन्थ्यो ॥

श्रीकूरत्ताल्वान्‌का दुईजना पुत्रहरूमध्ये यहाँ (श्रीपराशरभट्टर्) प्रथम हुनुहुन्छ । यहाँको "**पराशरभट्टर्**" र यहाँको भाइको "**व्यासभट्टर्**" भन्ने नामकरण गरेर विष्णुपरत्वस्थापक पराशर एवं व्यासमहर्षिको विषयमा श्रीरामानुजस्वामीजीले कृतज्ञता प्रकट गर्नुभएको थियो भनेर परम प्रामाणिक महापुरुषहरूले बताउनुहुन्छ । यसरी श्रीरामानुजस्वामीजीको समयपछि आचार्यपदवीमा अधिष्ठित श्रीपराशरभट्टर्स्वामीजी, आफ्ना पूज्यपिता कूरत्ताल्वान्‌कै समान व्याकरण आदि सामान्यशास्त्रहरूमा र संस्कृत एवं द्राविडवेदान्तहरूमा पनि सम्पूर्ण वैदुष्यलाई प्राप्त गरेर अखण्डप्रतिभाले सुशोभित बनेर श्रीरङ्गम्‌मा विराजमान रहनु भयो ॥

यहाँको अवतारहुनासाथ जाताशौच आदि निवृत्त हुनेबित्तिकै एघारौँ दिनमा श्रीरामानुजस्वामीजीले यी बालकलाई श्रीलक्ष्मी (श्रीरङ्गनायकी) जीको मन्दिर (सन्निधि) मा मगाएर अर्चना आदि गराएर "यो बालक लक्ष्मीकटाक्षको

पात्र बनेर दिन दिन बढ्दै गएर सिद्धान्तको प्रचारक बनोस्" भनेर मङ्गलाशासन गर्नुभयो भन्ने विषय, सम्प्रदायग्रन्थहरूमा मिल्दछ । अतः श्रीअनन्ताचार्य आदि महापुरुषहरूले पनि श्रीपराशरभट्टर्लाई **"श्रीरङ्गनायकीको मानसपुत्र"** भनेर प्रेमपूर्वक बोलाउने गर्नुहुन्थ्यो ॥

यसरी श्रीलक्ष्मीदेवीको र श्रीभगवद्रामानुजस्वामीजीको पनि (बाल्यकालमै) अनुग्रहका पात्र बन्नुभएका श्रीभट्टर्स्वामीजी उमेरले पक्व भएर पीठमा अधिष्ठित भए पछि श्रीरङ्गनाथ भगवान्को मन्दिरमा अध्ययनोत्सव, ब्रह्मोत्सव आदि विविध कार्यक्रमहरूको निर्वाहकको रूपमा विराजमान रहेर श्रीरङ्गनाथभगवान्को वैभवलाई बढाएको हुनाले **"श्रीरङ्गेशपुरोहित"** भन्ने विशिष्टनामले प्रसिद्ध हुनुभयो । श्रीरङ्गनाथ भगवान्ले पनि महावैभवको साथमा यहाँले निर्वहण गरेका महोत्सवहरूद्वारा प्रसन्न भएर पुनश्च यहाँले बनाएको **"श्रीरङ्गराजस्तव"** पूर्वोत्तरशतकहरूको श्रवणद्वारा पनि अत्यन्त प्रसन्न भएर अरू कुनै पनि पूर्वाचार्यहरूलाई प्राप्त नभएको विलक्षण गौरव-मर्यादा आदि यहाँको लागि व्यवस्था गरिदिनुभयो भन्ने विषय प्रामाणिक चरित्रग्रन्थहरूबाट स्पष्ट हुन्छ । आफ्ना पिताश्रीकूरेशस्वामीजीले नै यहाँको उपनयन आदि संस्कार

सम्पन्न गरेर सामान्यशास्त्रहरूको पनि अभ्यास गराएता पनि अध्यात्मविद्यालाई आफ्ना सतीर्थ्य श्रीगोविन्द मिश्र नामक एम्बार् आचार्यको सान्निधिमा अध्ययन गराउनुभएको थियो । त्यही भएर नै श्रीपराशरभट्टर्ले आफूले प्रणयन गरेको श्रीविष्णुसहस्रनामभाष्यको (भगवद्गुणदर्पणको) प्रारम्भमा "**वन्दे गोविन्दतातौ**" भन्ने श्लोकमा गोविन्दमिश्र र श्रीवत्सचिह्नमिश्र दुवैलाई आचार्यको रूपमा एकै वाक्यमा सविनय स्मरण गर्नुभएको छ । आफ्नो पितामा भएको शास्त्रवैदुष्य यहाँमा पनि परिनिष्ठितरूपमा थियो भन्ने विषयमा यहाँले रचना गरेका "**श्रीगुणरत्नकोश**" एवं "**श्रीरङ्गराजस्तव**"हरूमा विद्यमान प्रौढप्रयोगहरू नै साक्षी हुन् । यी दुई स्तोत्रहरू मात्र नभएर अष्टाक्षरी-द्वय-चरमश्लोकहरूको सङ्ग्रह विवरणाको रूपमा "**अष्टश्लोकी**" भन्ने नामकरण गरेर सानो सारगर्भित स्तोत्र पनि उहाँले कृपा गर्नुभएको छ ।।

"**भगवद्गुणदर्पण**" भन्ने नाम दिएर श्रीविष्णुसहस्रनाम स्तोत्रमाथि यहाँले रचना गरेको भाष्य समग्र एवं परम प्रामाणिक छ । यसैगरी विशिष्टाद्वैतसिद्धान्तसँग सम्बन्धित प्रमाण र प्रमेयको निष्कर्षलाई प्रतिपादन गर्ने "**तत्त्वरत्नाकर**" नामक

शास्त्रार्थजटिल महाग्रन्थ पनि यहाँकै रचना थियो भन्ने विषय थाहा हुन्छ । श्रीनाथमुनिस्वामीजीको न्यायतत्त्वग्रन्थलाई भैँ उक्त "तत्त्वरत्नाकर" ग्रन्थलाई पनि श्रीवेदान्तदेशिकस्वामीजीले आफ्ना न्यायसिद्धाञ्जन, सर्वार्थसिद्धिआदि ग्रन्थहरूका विभिन्नस्थानहरूमा उदाहरणको रूपमा प्रस्तुत गर्नुभएको छ ॥

स्तोत्रग्रन्थहरूमा, सहस्रनामभाष्यमा र साथै तत्त्वरत्नाकर आदिग्रन्थहरूमा यहाँले संस्कृतवेदान्तको प्रशस्तिलाई स्थिर त गर्नुभएकै छ यतिमात्र नभएर आल्वार्हरूका दिव्यप्रबन्धहरूमाथि पनि परिपूर्ण प्रावण्यले युक्त बनेर उहाँले शिष्यहरूलाई प्रवचनको रूपमा उपदेश प्रदान गर्नुहुन्थ्यो । ती ग्रन्थहरूमा भएको स्वारस्यलाई विभिन्न सन्दर्भहरूमा रसोक्तिको रूपमा व्याख्यान गर्नुहुन्थ्यो भन्ने विषय प्रबन्धहरूका प्रामाणिक द्राविडव्याख्यानहरूमा देख्न सकिन्छ ॥

यहाँको सद्गुणसम्पत्ति, सदाचारनिष्ठा, सिद्धान्तप्रवचनप्रागल्भ्य आदिलाई राम्रोसँग बुझेका अनेकन् महानुभावहरूले यहाँको आश्रय लिएर अत्यन्त भक्ति नम्रताको साथमा सेवा गरेर उज्जीवन प्राप्त गर्नुभएको थियो । यहाँकी जनयित्री माता श्रीकूरेशस्वामीकी धर्मपत्नी

श्रीआण्डालम्माले पनि अन्यशिष्यहरूको साथमा अन्तर्गत बनेर यहाँलाई पुत्रको रूपमा मात्र नमानेर आचार्यप्रतिपत्तिपूर्वक गौरवबुद्धि राखेर प्रतिदिन श्रीपादतीर्थग्रहण गर्नुहुन्थ्यो । (तिरूप्पावैको प्रामाणिक पूर्वाचार्यहरूका व्याख्याआदि ग्रन्थहरूमा उक्त विषयको उल्लेख छ) उक्त वृत्तान्त अनुसार यहाँको ज्ञानानुष्ठानसम्पत्ति कति उत्कृष्ट थियो भन्ने कुरा स्मरण गर्न सकिन्छ ॥

## यहाँको जीवनमा केही मधुरघट्टहरू

श्रीपराशरभट्टर्को जीवनमा अनेक मधुरसन्दर्भहरू, श्रीवैष्णवहरूका लागि नित्यानुसन्धेयको रूपमा भावनागर्ने योग्य छन् । कतिपय सन्दर्भहरूलाई यहाँ उदाहरणको रूपमा ग्रहण गरौं -

एकदिन उहाँले आफ्नी धर्मपत्नीलाई बोलाएर आमा ! पदार्थहरू (भगवान्लाई भोग लगाउने प्रसादहरू) सिद्ध गर्नु भयो ? ती पदार्थ (प्रसाद) हरू मैले भगवान्लाई समर्पण गरौं ? (भोग लगाऊँ) भनेर यथालापको रूपमा सहजभाषामा नै सोध्नुभयो । उहाँको त्यो वचन सुनेकी धर्मपत्नीले तुरुन्त "स्वामिन् ! म त हजुरकी दासभूता भार्या हुँ । यसरी 'आमा' भनेर बोलाउनहुन्छ र ? अब अगाडि यसरी न बोलाउनुहोला भनेर निवेदन गर्नुभयो । तुरुन्त

श्रीभट्टर्स्वामीजीले ओहो ! आमा । भनेर बोलाएँ ? त्यो भगवत्प्रेरणाले नै आएको वचन हो । त्यही भएर अब आजदेखि तपाईंलाई पत्नीको रूपमा परिगणना नगरेर मैले आमाकोरूपमा नै गौरव गर्ने छु भनेर उहाँसँग सांसारिक भोगहरूलाई छोडेर जीवनान्त उहाँको विषयमा मातृवत् गौरवबुद्धिले युक्त भएर रहनुभयो । सुन्ने व्यक्तिहरूका हृदयहरूलाई चकित बनाउने यो सङ्घटना, श्रीभट्टर्स्वामीजीको इन्द्रियनिग्रहको अत्युत्तम निदर्शन हो ॥

एक दिन श्रीभट्टर्स्वामीजीले, भगवद्दर्शनको लागि श्रीरङ्गम्मा श्रीरङ्गनाथको मन्दिरमा जाँदाजाँदै श्रीरङ्गवीथी (स्ट्रीट)हरूमा आचार्यपुरुषहरूका भवनहरूका आँगनहरूमा केहीजना भागवतहरूलाई देख्नुभयो । भागवतहरूको शेषप्रसादलाई भिक्षाको रूपमा स्वीकार गर्ने यी याचकहरू कति धन्य हुन् ? भन्ने यौटा विलक्षण भाव उहाँको मनमा स्फुरित भयो । तुरुन्त नै उहाँले ती भागवत वैष्णवहरूको विषयमा आशुरूपमा पृथ्वीवृत्तमा यौटा श्लोकको रचना गर्नुभयो । उहाँको व्याकरणपाण्डित्यको वैभव अनुसार त्यो मुक्तकश्लोक व्याकरणप्रक्रियाले जटिल भएता पनि मधुरार्थबोधक बनेर प्रकट भयो । उक्त मुक्तकश्लोक यसप्रकार छ-

"दिदेविषति मानुषः स च तितद्विभूषत्यसौ
शिशर्विषति सर्वथा विविधयिष्यते तेन च ।
मुमुक्तिषति तत्त्वगत्यवगतेस्स निस्संशयं
निनित्यिषति सोऽप्यहो । स च रिरङ्गभिक्षूषति" ।

अल्पायु एवम् अदृढ शरीरले युक्त भएको मनुष्यले मैले देवजातिमा जन्म ग्रहण गर्न पाए राम्रो हुने थियो भन्ने इच्छा व्यक्त गर्दछ । त्यो देवजातिमा विद्यमान व्यक्तिले त्रिलोकाधिपति इन्द्रको पदवी आफूलाई मिले राम्रो हुने थियो भन्ने मान्दछ । ती इन्द्रले पनि अणिमा लघिमा आदि अष्टसिद्धिले युक्त भएको शिवजीको स्थिति मलाई मिले राम्रो हुने थियो भन्ने अपेक्षा राख्दछन् । ती शिवजीले पनि आफूभन्दा माथि रहेको चतुर्मुखब्रह्मपदवी आफूलाई मिले राम्रो हुने थियो भन्ने इच्छा राख्नुहुन्छ । ती ब्रह्माजीले पनि प्रकृतिबन्धनबाट विमुक्तिलाई प्राप्त गरेर ब्रह्मानन्द (सायुज्यमोक्ष) लाई अनुभव गर्नेछु भन्ने आशा राख्नुहुन्छ । ती मुक्तपुरुषले पनि अनन्त - गरुड - विष्वक्सेन आदि नित्यपुरुषहरूले झैं नित्य भगवत्सेवा मैले प्रारम्भ देखि प्राप्त गर्न सकिन भनेर केही पश्चात्ताप प्राप्त गर्नुहुन्छ । ती नित्यसूरिहरूले पनि "भगवत्सेवा भन्दा भागवतहरूको शेषत्व ठूलो हो" भन्ने मानेर श्रीरङ्गम् दिव्यक्षेत्रमा भिक्षुकको

रूपमा भागवतहरूको शेषप्रसाद ग्रहण गर्नका लागि त्यहाँ आउनुहुन्छ - भन्ने माथिको श्लोकको भाव हो ॥

श्रीरङ्गक्षेत्रमा र श्रीरङ्गनाथभगवान्मा श्रीपराशरभट्टर् स्वामीजीको अपार अभिमान (निष्ठा) थियो । श्रीरामनामामृतको रुचिविशेषले गर्दा श्रीहनुमान्जीले परमपदवासलाई पनि तिरस्कार गर्नुभएको थियो । त्यसैगरी यहाँ (श्रीपराशरभट्टर्) ले पनि श्रीरङ्गम्मा भगवद्भागवतगोष्ठी-महोत्सव आदि दर्शनको अभिलाषाले श्रीवैकुण्ठको सुख पनि मलाई चाहिँदैन भनेर उपेक्षा गर्नुभएको थियो ॥

कुनै एक समयमा यहाँ (श्रीभट्टर्स्वामीजी)को पीठभागमा एउटा ठूलो घाउ भएको थियो । पीडाको अनुभव गर्दै श्रीरङ्गनाथभगवान्को सन्निधिमा दर्शनार्थ गएको बेलामा उहाँको पीडालाई देखेर "मरण हुन्छ कि भनेर दुःखी हुनुभएको हो ? नडराउनुहोस् हजुरलाई मोक्ष दिनेछु" भनेर भगवान्ले उहाँलाई आश्वासन दिनुभयो ॥

तुरुन्त श्रीभट्टर्स्वामीजीले "हे रङ्गनाथ ! हजुरको दिव्यकृपाले गर्दा श्रीवैकुण्ठमा पनि मैले पठाएको सानो चिट्ठीको टुक्रा पनि चल्नेगरी अधिकार प्राप्त गरें । मलाई र मेरा सम्बन्धीहरूलाई पनि हजुरले मोक्ष प्रदान गर्नुहुन्छ भन्ने विषयमा कुनै सन्देह नै छैन । तर म वैकुण्ठमा गएँ

भने वहाँ "कस्तूरीकलितोर्ध्वपुण्ड्रतिलकं कर्णान्तलोलेक्षणं, मुग्धस्मेरमनोहराधरदलम्" भने अनुसार यस्तो सुन्दर मुखारविन्दको सेवा (दर्शन) वहाँ पाउन सक्दिन कि ? यो यस्तो दर्शन वहाँ (श्रीवैकुण्ठमा) प्राप्त भएन भने फेरि सूर्यमण्डललाई भेदन गरेर, यही श्रीरङ्गम्मा नआई हुँदैन कि ? भनेर विचार गर्दैछु यस्तो समाधान दिनुभयो । यो कथा नाच्चियार्तिरुमोलिग्रन्थमा व्याख्यानकर्ता श्रीपेरियवाच्चान्पिल्लैस्वामीजीले उदाहरणको रूपमा प्रस्तुत गर्नुभएको छ । कतिपय विशेषसन्दर्भहरूमा एवं द्रविड दिव्यप्रबन्धहरूको प्रवचनसमयहरूमा पनि यहाँले बोलेका छलोक्ति र रसोक्तिहरूले त्यस समयका सहृदय सज्जननहरूलाई आकर्षित गर्दथे ॥

कुनै एक समयमा श्रीरङ्गनाथभगवान्को मन्दिरको भित्री परिसरमा कारणवश शुनक (कुकुर) पसेछ । त्यतिबेला भगवान्को आलय अपवित्र भयो भन्ने भावले अर्चक एवं पुरोहितहरूले शास्त्रीयपद्धतिअनुसार संप्रोक्षणरूप शान्तिकर्म गर्नुभयो । त्यसै समयमा भगवद्दर्शनको लागि त्यहाँ पाल्नुभएका श्रीपराशरभट्टर्स्वामीजीले श्रीरङ्गनाथभगवान्सँग वार्तालाप गर्दै छलोक्तिको रूपमा यौटा श्लोक यसरी बोल्नुभयो -

"असन्निकृष्टस्य निकृष्टजन्तो-
र्मिथ्यापवादेन करोषि शान्तिम् ।
ततो निकृष्टे मयि सन्निकृष्टे
कां निष्कृतिं रङ्गपते । करोषि ?"

हे रङ्गनाथ । वास्तवमा त्यो शुनक (कुकुर) मन्दिरमा आएको थियो कि थिएन ? त्यो क्षुद्रजन्तु भित्र आयो भन्ने यौटा अपवाद (निन्दा) त्यसमाथि लगाएर हजुरले यो ठूलो शान्तिकर्म (संप्रोक्षण) स्वीकार गर्दैहुनुहुन्छ । त्यो यौटा ज्ञान नभएको जन्तु हो । ज्ञानले युक्त भएको मैले अनेकौं पाप कर्महरू गरेर त्यो जन्तुभन्दा पनि नीचस्थितिमा पुगेको छु । त्यस्तो म दिनदिनै हजुरको मन्दिरमा आइरहँदा पनि शान्तिकर्म हजुरले किन गर्नुहुन्न ? आशुकविताको रूपमा यो मुक्तकश्लोकमा आचार्यश्रीचरणले "म ज्ञानानुष्ठान सम्पन्न छु" भन्ने अहङ्कार प्रकट नगरेर परिपूर्ण नैच्यानुसन्धानको आविष्कार गर्नुभएको छ । यही नै छलोक्ति हो ॥

यसैगरी श्रीरङ्गनाथभगवान्को तिरुमञ्जन (अभिषेक) उत्सव चल्दै गरेको समयमा आर्द्र (चिसो) वस्त्र धारण गरेर उहाँले आशुकविताको रूपमा बोलेको अर्को छलोक्तिपूर्ण यो श्लोक पनि आस्वादन गरौं-

"त्वं मेऽहम्मे कुतस्तत्तदपि कुत इदं वेदमूलप्रमाणात्
एतच्चानादिसिद्धादनुभवविभवात्सोऽपि साक्रोश एव ।
क्वाक्रोशः कस्य गीतादिषु मम विदितः कोऽत्र साक्षी सुधीस्स्यात्
हन्त । त्वत्पक्षपाती स इति नृकलहे मृग्यमध्यस्थवत्त्वम् ।"

अभिमानी (दुराग्रही) जीवात्मासँग विवादमा परेर म सर्वस्वामी हुँ जीवात्मा आफ्नो (मेरो) दास हो भन्ने विषयलाई कष्टपूर्वक विवाद गरेर पनि लुकेको तत्त्व (यथार्थ) लाई सत्य हो भनेर स्थापित गर्नको लागि चिसो वस्त्र धारण गरेर चारजनाको समक्षमा शपथ गर्दै हुनुहुन्छ रङ्गनाथ ॥ भन्ने यो श्लोकको भाव हो । (उक्त यस मुक्तकश्लोकको विस्तृत विवरण, दासले लेखेको "मधुरोपहार" भन्ने पुस्तकमा "जीव र ईश्वरको मधुर विवाद" भन्ने लेखमा ग्रहण गर्न सकिन्छ) यसरी यहाँले रचना गरेका मुक्तकश्लोकहरू अरु पनि धेरै छन् भनेर प्रामाणिक दाक्षिणात्य आचार्यहरूले बताउनुहुन्छ । यसैगरी भगवद्विषय आदि ग्रन्थहरूमा यहाँले कृपापूर्वक बताएका रसोक्तिहरू अनेकौं छन् । ती सबै विषयहरू व्याख्यानैकगम्य छन् ॥

## यहाँको जीवनमा यौटा अतिमुख्य सन्दर्भ

"वेदान्ती" भन्ने नामले प्रसिद्ध एकजना महाविद्वान्लाई शास्त्रार्थमा परास्त गरेर शिष्यको रूपमा परिणत गरेको वृत्तान्त विलक्षण छ । यो यौटा विचित्र सन्दर्भ हो । कर्नाटक प्रान्तमा षट्शास्त्रहरूमा सम्पूर्ण अधिकारलाई सम्पादन गरेका एकजना महापण्डित हुनुहुन्थ्यो । धनाढ्य महाराजाहरूले अन्यराजाहरूलाई परास्त गरेर प्रत्येक वर्ष उनीहरूबाट कर (ट्याक्स) लिए झैं यी वेदान्ती पण्डितले पनि अन्य पण्डितहरूलाई शास्त्रार्थ (वाद) मा हराएर उनीहरूबाट कर लिने गर्नुहुन्थ्यो। छ वटा गोडाहरूले जमाएको यौटा उन्नत पीठ (सिंहासन) निर्माण गराएर त्यसमा आफू अधिष्ठित भएर (बसेर) म नै षट्शास्त्रको विद्वान् हुँ भनेर उहाँले गर्व गर्नुहुन्थ्यो । श्रीभगवद्रानुजस्वामीजीको जीवनको अन्तिम समयमा यी वेदान्तीजी हुनुहुन्थ्यो । यहाँलाई परास्त गरेर स्वमत (विशिष्टाद्वैतसिद्धान्त) मा प्रवेश गराउने उहाँ (श्रीरामानुजस्वामीजी) को अभिलाषा थियो । युवावस्थामा विद्यमान सर्वशास्त्रविशारद एवं विलक्षण प्रतिभासम्पन्न भट्टरस्वामीजीद्वारा यो कार्य सम्पन्न गराउनुपर्ला भनेर उहाँले त्यो विषय बाँकी छोड्नुभएको थियो । श्रीरामानुजस्वामीजीको समयमा त्यो काम भएन ॥

त्यसपछि कुनै एक समयमा कर्नाटकप्रान्तबाट

तीर्थयात्राको रूपमा श्रीरङ्गम् आएका एकजना ब्राह्मणले श्रीभट्टर्स्वामीजीको गोष्ठी, उहाँको शास्त्रपाण्डित्य र उहाँको प्रवचनको धाराप्रवाहशैलीलाई राम्रोसँग देखेर सुनेर मुग्ध बन्दै श्रीभट्टर्स्वामीजीसँग यसरी निवेदन गरे - "प्रभो ! हाम्रो कर्नाटकप्रान्तमा पनि हजुर जस्तै अखण्डशास्त्रपाण्डित्यले पूर्ण एकजना महानुभाव हुनुहुन्छ । शौर्य भएका वीरपुरुषहरू र शास्त्रवेत्ता विद्वान्हरूमा आफ्नो समान अर्को व्यक्ति छ भन्ने विषय थाहा पाएपछि त्यस व्यक्तिसँग भेट गरेर शास्त्रार्थमा परास्त गरेर आफ्नो वैशिष्ट्यलाई स्थापित गरौं भन्ने उत्कण्ठा प्रत्येक दिन बढ्दै जाने कुरा लोकमा सहजरूपमै देखिन्छ ॥

श्रीभट्टर्स्वामीजीले ती वेदान्तीलाई देख्न पाऊँ भन्ने आशा राख्नुभएको थियो । श्रीभट्टर्स्वामीजीलाई ती वेदान्तीजीको विषयमा विस्तृत विवरण बताउने ती पण्डितजीले पुन: आफ्नो प्रान्त (कर्नाटक) मा गएर श्रीभट्टर्स्वामीजीको गोष्ठीको वैभवको विषयमा र उहाँको सम्पूर्ण वैदुष्यको विषयमा पनि आफ्नो दृढ परिचयलाई व्यक्तरूपमा बताए । श्रीरङ्गम्मा विराजमान ती भट्टर्स्वामीजीलाई कुन शास्त्रमा प्रावीण्य छ ? भनेर ती वेदान्तीजीले प्रश्न गर्दा - उहाँ षट्शास्त्रहरूकै विद्वान् हुनुहुन्छ भनेर उनले निवेदन गरे ।

त्यसैदिनदेखि यी भट्टरसँग शास्त्रार्थ गरौं भन्ने उत्कण्ठा वेदान्तीमा उत्कटरूपमा बढ्दै गयो । यसरी समय व्यतीत हुँदै जाँदा श्रीरङ्गम्मा विराजमान महापुरुषहरूको प्रेरणाद्वारा श्रीभट्टर्स्वामीजी, श्रीभगवद्रामानुजस्वामीजीको अभीष्टलाई स्मरण गरेर प्रत्यक्षरूपमा शास्त्रार्थ गरेर उहाँ (वेदान्ती) लाई आफ्नो सम्प्रदायमा प्रवेश गराउनको लागि श्रीरङ्गम्बाट कर्नाटकप्रान्तको लागि प्रस्थान गरेर जानुभयो। महैश्वर्यसम्पन्न ती प्रकाण्ड पण्डितजीलाई **"वेदान्ती"** भनेर नै सबैले व्यवहार गर्दथे ॥

श्रीभट्टर्स्वामीजी, सर्वप्रथम यादवाचल (मेलुकोटे) पुगेर त्यहाँ विराजमान तिरुनारायणस्वामी अर्थात् सम्पत्कुमार भगवान् एवं श्रीभगवद्रामानुजस्वामीजीको अर्चारूप श्रीविग्रह र अन्य भागवतोत्तमहरूको पनि दर्शन गरेर उहाँहरूको अनुमति लिएर **"वेदान्ती"** नामक ती विद्वान्को निवासस्थान भएको गाउँमा पुग्नुभयो । गाउँदेखि बाहिर नै देखिएका एकजना ब्राह्मणले श्रीभट्टर्स्वामीजीको वैदिकपरिवार र छत्र-चामर-वाहन आदि वैभवलाई देखेर हजुरहरू को हुनु हुन्छ ? किन यहाँ आगमन भयो ? भनेर सोध्दा श्रीभट्टर्स्वामीजीले आफ्नो वृत्तान्त सबै बताएर वेदान्तीजीसँग शास्त्रार्थ गर्न आएको कुरा अवगत गराउनुभयो । उनले

श्रीस्वामीजीलाई राम्रो उपाय बताए । हजुरहरू यसरी वैभवको साथमा जानुभयो भने उहाँ (वेदान्तीजी) को भवनमा प्रवेश गर्नको लागि मौका मिल्दैन ॥

वेदान्तीले भन्दा पहिले नै उहाँका एक एक शास्त्रमा प्रवीण शिष्यहरूले शास्त्रार्थमा आएका व्यक्तिहरूलाई पछाडि पठाइदिन्छन्। ती वेदान्तीजीले हजारौं ब्राह्मणहरूलाई आफैं साथमा बसेर अन्नदान गराइरहनुहुन्छ । हजुर निराडम्बररूपले भोजनको निमित्त आगन्तुक अतिथिजस्तो बनेर प्रवेश गर्नुहोला । अनि मात्र उहाँको दर्शन सम्भव हुन्छ । त्यो सूचनालाई स्वीकार गरेर श्रीभट्टर्स्वामीजीले आफ्नो वैदिक परिवारलाई गाउँदेखि बाहिर नै राखेर सामान्य वेषभूषामा भोजनार्थीहरूको साथमा भित्र प्रवेश गर्नुभयो । भोजनशालाको समीपमा नै वेदान्तीजी छवटा गोडाहरूले जडान गरिएको पीठ (सिंहासन) मा बसेर आनन्दपूर्वक अन्नदान कार्यक्रमको पर्यवेक्षण गरिरहनुभएको थियो । श्रीभट्टर्स्वामीजी, त्यहाँका परिजनहरूले रोक लगाउँदै गर्दा पनि त्यसको कुनै ख्याल (परिगणना) नगरीकन वेदान्तीको अभिमुख भएर समीपमै पुग्नुभयो । यी वेदान्तीजीभन्दा भट्टर्स्वामीजी उमेर अवस्थाले धेरै नै कनिष्ठ हुनुहुन्थ्यो । उमेर ढल्दै गएका ती वेदान्तीजीले कलकलाउँदो युवकको

रूपमा प्रकाशमान भट्टर्लाई देखेर "ए बाबु ! तिमीलाई के चाहियो ?" भनेर सोध्नुभयो । उहाँले गम्भीरमुद्रामा "म तपाईंले दिँदै गरेको अन्न भिक्षाको लागि आएको होइन । वादभिक्षा (शास्त्रार्थ) को लागि आएको हुँ मेरो नाम पराशरभट्टर् हो" भनेर समाधान दिनुभयो ॥

पहिला श्रीरङ्गम् गएर यात्रीको रूपमा आएका ब्राह्मणले बताएका श्रीरङ्गवासी पण्डित यिनै हुनसक्छन् भन्ने स्मरण गरेर "हजुर श्रीरङ्गम्को पराशरभट्टर् हो ?" भनेर प्रश्न गर्नुभयो वेदान्तीजीले । "हो" भनेर समाधान दिँदै अति वेगको साथमा श्रीस्वामीजीले वेदान्तोपन्यास प्रारम्भ गर्नुभयो । वेदान्तीजी पनि प्रारम्भमा आश्चर्यले भयभीत जस्तो हुनुभयो । फेरि तुरुन्त धैर्य धारण गरेर शास्त्रार्थ (वाद)मा उत्रिनुभयो । मदगजहरूको सङ्घर्ष भएजस्तो गरी उहाँहरू दुईजना बीच वाद-प्रतिवाद नौ दिनसम्म लगातार चल्दै गयो । दसौं दिनमा भट्टर्स्वामीजीले **"तिरुनेडुन्दाण्डकम्"** भन्ने श्रीपरकालसूरिको दिव्यप्रबन्ध ग्रन्थलाई प्रमाणको रूपमा स्वीकार गरेर अद्वैतको खण्डन गर्दै विशिष्टाद्वैतसारलाई बहुमुखेन प्रतिपादन गर्दा ती वेदान्तिमुनिजी यहाँको वाग्धाराको वैभवले परवश भएर आफ्नो पराजयलाई स्वीकार गर्दै यहाँ (यी पराशरभट्टर्)

मनुष्य मात्र हुनुहुन्न । आदिशेषमा शयन गरेका श्रीरङ्गनाथले नै यो रूपमा यहाँ आएर मलाई कृपा गर्नुभयो भनेर स्तुति गर्दै श्रीपराशरभट्टर्को पादपद्ममा प्रणत हुनुभयो । त्यतिबेला श्रीआचार्यचरणले अत्यन्त स्नेहको साथमा उहाँलाई शिष्यको रूपमा स्वीकार गरेर **"तापः पुण्ड्रस्तथा नाम मन्त्रो यागश्च पञ्चमः"** भन्ने प्रमाणवचनको अनुसार श्रीवैष्णव सम्प्रदायगत पञ्चसंस्कारहरू कृपा गर्नुभयो ॥

अब अगाडि हजुरले विवेकसम्पन्न बनेर सहजरूपमै शास्त्रवेत्ता भएको हुनाले अप्रामाणिक मायावादलाई छोडेर नारायणपरत्वलाई अङ्गीकार गरेर यस प्रान्तमा विशिष्टाद्वैतसिद्धान्तको प्रचार अगाडि बढाउनुहोस् भन्ने आदेश दिएर श्रीभट्टर्स्वामीजी श्रीरङ्गम् पाल्नुभयो । यिनै वेदान्तिमुनि नै पछि गएर **"नञ्जीयर्" (अस्मद्यतिः)** भन्ने श्रीभट्टर्स्वामीजीद्वारा प्रदत्त व्यावहारिकनामले युक्त बनेर आचार्यको सेवामा निमग्न रहनुभयो । श्रीपराशरभट्टर् पछि यहाँ नै गुरूपरम्पराको मालामा आबद्ध हुनुहुन्छ ।

**"वीरशिखामणिपल्लवराय"** भन्ने एकजना राजा, श्रीपराशरभट्टर्स्वामीजीका शिष्य थिए । उनले एकदिन भट्टर्स्वामीजीको सन्निधिमा आएर अत्यन्त विनम्रताको साथमा यसरी प्रार्थना गरे - "स्वामीजी ! मेरो वृत्तिको

समुद्रलाई पार गरेर सुवेलाचलमा वानरसेना पुग्दा सूर्यास्तको समय भएको थियो । अन्धकार फैलिँदै थियो रात्रिञ्चर राक्षसहरूको लागि बल मिल्ने समय थियो । राक्षसहरूको राजधानी लङ्का अति समीपमा थियो । मायायुद्धमा निपुण राक्षसहरूले कुनै बेला पनि रामको लागि अनर्थ गर्न सक्छन् । त्यही भएर वानरवीरहरूले निद्रा नलिईकन वलयको (घेराको) आकारमा रहेर (हामी सबैजनाले) राम र लक्ष्मणको रक्षा गर्नुपर्दछ भनेर निश्चय गरेका थिए । रात्रीको समयमा केही घण्टाको समयसम्म केहीजनाले, अरु केही समय अरु केही जनाले पालो पालो गरी यौटा व्यवस्था बनाएर रक्षा गर्नको लागि सन्नद्ध (तयार) भएका थिए ॥

प्रकृतिको प्रभावले गर्दा रात्रीको समय व्यतीत हुँदै जाँदा वानरहरू सबै समुद्रको शीतल हावाको स्पर्श मिल्दा निद्रापरवश भएर शयन गर्न थाले । प्रकृतिको वशमा नहुने को छन् र ? ती वानरहरू निदाउना साथ राक्षसहरूद्वारा यी वानरहरूलाई कुनै अनर्थ हुन सक्छ भन्ने सोचेर श्रीराम-लक्ष्मण दुवैले हातमा धनुर्बाण धारण गरेर आकर्णान्त सन्धान गरेर त्यो रात्री पुरै चारैतिर घुमेर जता हेर्‍यो त्यतै राम र लक्ष्मणमात्र देखिने गरी नानारूप धारण गरेर राक्षहरूलाई भयङ्कर रूप देखाएर उहाँहरूले वानरसेनाको

रक्षा गर्नुभयो । आफ्ना आश्रितभक्तहरूको रक्षा गर्नमा दयाका समुद्र भगवान् रामको दीक्षा यस्तो विलक्षण छ । आफूलाई रक्षा गर्न खोज्ने वानरसेनालाई भगवान् रामले नै रक्षा गर्नुभयो । यस सन्दर्भलाई झल्काउने यो निम्नाङ्कित श्लोकरत्न, हामी सबैको लागि नित्यानुसन्धेय छ -

**"अग्रतः पृष्ठतश्चैव पार्श्वतश्च महाबलौ ।**
**आकर्णपूर्णधन्वानौ रक्षेतां रामलक्ष्मणौ" ॥**

श्रीभट्टर्स्वामीजीको यो उपदेश सुनेका ती **"पल्लवराय"** नामक राजा **"धन्योऽस्मि"** भन्दै आचार्यलाई प्रणाम गरेर बिदा भए ॥

यसरी श्रीरङ्गम्क्षेत्रमा श्रीरामानुजस्वामीजीपछि आचार्य पीठमा अधिष्ठित भएर श्रीपराशरभट्टर्स्वामीजीले नञ्जीयर (वेदान्ती) आदि शिष्यगणहरूको साथमा उभयवेदान्तप्रवर्तकको रूपमा विराजमान रहेर श्रीरङ्गक्षेत्रको वैभवलाई व्यापक बनाउँदै आफ्नो पवित्र जीवन यापन गर्नुभयो ॥

उहाँको समयमा पनि कुनै एक परिस्थितिमा शैवमतस्थ चोलदेशको राजाले, उहाँ (श्रीपराशरभट्टर्) ले गरेको श्रीवैष्णवमतको विस्तृत प्रचारलाई सहन गर्न नसकेर हाम्रो राज्यलाई छोडेर जानु भनेर आदेश गरेका थिए ।

त्यतिबेला केही समय श्रीस्वामीजी **"दक्षिणवेङ्कटाचल"** भन्ने नामले प्रसिद्ध **"तिरुमालिरुंशोलै"** (वनाद्रि) भन्ने दिव्यक्षेत्रमा गएर रहनुभयो। केही दिन नम्माल्वार् (श्रीशठकोपसूरि) को अवतारस्थल कुरुकापुरीमा पनि निवास गर्नुभयो । तर श्रीरङ्गनाथ भगवान्को र श्रीरङ्गक्षेत्रको विरहवेदना उहाँको लागि दुर्भर भयो । श्रीरङ्गम्लाई छोडेर जाँदा भगवान्को सेवा, दर्शन छुट्यो भन्ने मनस्तापले आर्तिपूर्वक मुक्तकश्लोकको रूपमा **"कदाऽहम् कावेरीतटपरिसरे"**, .... **"कदाऽहं .... कस्तूरीकलित......"** इत्यादि उहाँले रचेको श्लोकमालिकाले सहृदयपाठकहरूको मनलाई द्रवित बनाइदिन्छ ॥

श्रीभट्टर्स्वामीजीको अवतार तनियन् यस प्रकार छ -

**माधवे मास्यनूराधाजातं भट्टार्यदेशिकम् ।**
**गोविन्दगुरुपादाब्जभृङ्गराजमहं भजे ॥**

## स्वस्ति श्रीर्दिशतात्



# लेखकका अन्य प्रकाशित कृतिहरु



१) मधुरोपहार

२) अमृतलहरी

३) श्रीवैष्णवसौभाग्यम्

४) भगवत्क्षमाको महिमा

५) रामायणमा छिपेका रहस्यहरू

६) भगवान्को मङ्गलाशासन

७) कूरेशस्वामीजीको वैभव